# राष्ट्रिय आयुर्वेद स्वास्थ्य नीति, २०५२

## १. औचित्य

आयुर्वेद नेपालको राष्ट्रिय चिकित्सा पद्धति हो। हिमालय र जलस्रोत जस्तै सम्पदाको रूपमा आयुर्वेद चिकित्साको मौलिक परम्परा, पाण्डुलिपी, अभिलेख र प्रशस्त पाइने जडिबुटीहरूको औषधीय प्रयोगले नेपालमा महत्वपूर्ण स्थान लिएको छ। नेपाल सरकारको आयुर्वेद चिकित्सा पद्धति प्रतिको प्रतिबद्धतालाई प्रभावकारी रूपले कार्यान्वयन गर्ने उद्देश्यले राष्ट्रिय आयुर्वेद स्वास्थ्य नीति, २०५२ प्रस्तुत गरिएकोछ।

## २. उद्देश्य

राष्ट्रिय स्वास्थ्य नीति, २०४८ द्वारा परिलक्षित उद्देश्य परिपूर्तिका लागि परापूर्वकालदेखि स्वास्थ्यरक्षा र रोगको उपचार गर्दै आएको आयुर्वेद चिकित्साको विशिष्टता समयसापेक्ष छ। सुलभ र निरन्तर प्रयोग हुन सक्ने स्थानीय जडिबुटी एवं औषधी द्रव्यहरूको अधिकाधिक उपयोगद्वारा बहुसंख्यक जनताको स्वास्थ्यस्तरमा वृद्धि गर्न र स्वास्थ्यसेवामा स्वाबलम्वी बनाउनु यस नीतिको प्रमुख उद्देश्य रहेकोछ।

## ३. आयुर्वेद चिकित्सा सेवाको स्वरूप

आयुर्वेद चिकित्सा विज्ञानको स्वरूप दोषदूष्य सिद्धान्त विशिष्ट चिकित्सा प्रविधि उपलब्ध स्थानीय जडिबुटी, खनिज जान्तव द्रव्यहरूको उपयोगमा आधारित छ। आयुर्वेद चिकित्सालाई देशको विशिष्ट चिकित्सा पद्धतिको रूपमा क्रमबद्ध विकास गरिनेछ।

३.१ आयुर्वेद विभागको वर्तमान संगठनमा आवश्यक सुधार गरी विभिन्न शाखाहरूको संचालनका साथै सुदृढीकरण गरिनेछ। स्वास्थ मन्त्रालयअन्तर्गत अन्य विभाग र इकाइहरूसँग समन्वयात्मक कार्यविधि अपनाइने छ। आयुर्वेद चिकित्सा सेवा, शिक्षा अनुसन्धान एवं औषधी निर्माणसम्बन्धी सरकारी एवं गैरसरकारी राष्ट्रिय एवं अन्तराष्ट्रिय संस्थाहरूको क्रियाकलापको समन्वय विभागले गर्नेछ। प्राकृतिक चिकित्सा होमीयोप्याथी एवं अन्य वैकल्पिक चिकित्सा पद्धतिहरूको सेवालाई विकास एवं विस्तार गर्नका लागि समेत विभाग अन्तर्गत इकाईहरूको स्थापना गरिनेछ।

३.२ केन्द्रीय स्तरमा रहेको आयुर्वेद चिकित्सालय नरदेवीलाई हाल १०० शैय्यामा परिणत गरी आयुर्वेदको विशिष्ट सेवा दिने अस्पतालको रूपमा आयुर्वेदका विभिन्न विभागहरूको स्थापना गरी संचालन गरिनेछ। यस चिकित्सालयलाई विकास समितिअन्तर्गत संचालन गरिनेछ।

३.३ नेपाल सरकारद्वारा सिद्धान्तः स्वीकृत भै वर्तमान सिंहदरबार वैद्यखानालाई स्वायत्तता दिई व्यावसायीकरण गर्ने नीतिअनुरूप आयुर्वेद औषधी उत्पादन एवं आपूर्ति व्यवस्थालाई सुव्यवस्थित र प्रभावकारी गराउनुका साथै अन्तर्राष्ट्रिय गुणस्तरका औषधीहरूको निर्माण गरी निर्यात प्रवर्द्धनबाट राष्ट्रिय अर्थतन्त्रलाई शवल बनाउन टेवा पुऱ्याइनेछ ।

३.४ हाल संचालित १५ शैयायुक्त आयुर्वेद चिकित्सालय दाङ्गलाई मध्यपश्चिमाञ्चल क्षेत्रीय आयुर्वेद चिकित्सालयको रूपमा परिणत गरी आवश्यक जनशक्ति तथा साधनयुक्त औषधी निर्माण शाखासहितको विशेष सेवा दिने चिकित्सालयको रूपमा संचालन गरिनुका साथै निर्माणाधीन आवश्यक भवनहरूको निर्माण पूरा गरिनेछ ।

३.५ बाँकी ४ विकास क्षेत्रहरूमा १५ शैया युक्त १/१ वटा औषधी निर्माणशाला सहितको क्षेत्रीय चिकित्सालयहरूको स्थापना गरी संचालन गरिनेछ ।

३.६ आयुर्वेद औषधालयहरूको प्राविधिक प्रशासनिक कार्यहरूको सुपरिवेक्षण, अनुगमन, मूल्याङ्कन र प्रेषण प्रणालीलाई प्रभावकारी बनाई स्थानीय स्तरमा उपलब्ध हुने जडिबुटीहरूको उत्पादन, संकलन, संरक्षण, सम्बन्र्द्धनका साथै आयुर्वेद चिकित्सामा त्यसको अधिकाधिक परिचालनका लागि हाल भएका जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्रहरूको सुदृढीकरण तथा बाँकी जिल्लाहरूमा समेत जिल्लाका सरदरमुकाममा रहने गरी आवश्यक जनशक्ति र साधनयुक्त १/१ जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्रको स्थापना गरिनेछ ।

३.७ हाल संचालन भई रहेका आयुर्वेद औषधालयहरूलाई साधनयुक्त बनाई नेपाल सरकारबाट पठाइने औषधीका अतिरिक्त स्थानीय रूपमा उपलब्ध हुने जडिबुटीहरूको उत्पादन, संरक्षण, सम्बर्द्धन, प्रविधि र चिकित्सामा त्यसको अधिकाधिक उपयोगका लागि सक्षम बनाइनुका साथै जनघनत्व, स्थानीय माग एवं जनसहभागितको आधरमा कमसेकम हरेक पाँच गाउँ विकास समितिको बीचमा पर्ने गरी औषधालयहरूको स्थापना गरिदै लगिनेछ ।

३.८ आयुर्वेद स्वास्थ्य केन्द्र तथा औषधालयहरूको भवन निर्माण गरी परिसरमा नमूना जडीबुटी उद्यानको विकास गरिदैं लगिनेछ ।

## ४. अन्तर संस्थागत एवं जनसहभागिताको परिचालन

४.१ ग्रामीण क्षेत्रमा परम्परागत रूपमा जडिबुटीहरूको माध्यमबाट औषधी गरिरहेका स्वास्थ्यकर्मीहरू, धामी झाँक्री, महिला स्वयंसेविका, सुडेनी, सामाजिक संघ

संस्थाका कार्यकर्ताहरूलाई जडिबुटी उत्पादन, सम्बर्द्धन, संकलन, संरक्षण र प्रयोगको तालीम दिई आयुर्वेद चिकित्सा सेवामा जनसहभागिताको परिचालन गरिनेछ ।

४.२ आयुर्वेद क्षेत्रसँग समन्वयका लागि जडिबुटी वन, आरक्षण क्षेत्र दुर्गम क्षेत्र विकास समिति, कृषि, शिक्षा आदि क्षेत्रका सरकारी एवं गैह्र सरकारी तहमा राष्ट्रिय स्तरदेखि ग्रामीण स्तरसम्म अन्तरसंस्थागत समन्वय समितिहरू कायम गरिनेछन् ।

## ५. जडिबुटी खेती औषधी उत्पादन एवं व्यवसाय

५.१. हिमाल पहाड र तराईमा नमूना जडिबुटी उद्यानहरूको विकास गरी जडिबुटीहरूको घरेलु उपचारमा प्रयोग, उत्पादन, सम्बर्द्धन, संरक्षण, प्रवर्द्धन बारे जनस्तरमा ज्ञान दिई जडिबुटिहरूको गुणस्तरयुक्त व्यापारमा प्रोत्साहन गरिनेछ ।

५.२. सही जडिबुटीहरूको परिचय गरी स्वदेशी व्यापार एवं विदेश पैठारीमा स्तरीयता कायम गर्न जडिबुटीहरूसँग सम्बद्ध सरकारी एवं गैरसरकारी संस्थासँग समन्वय कायम गरिने छ ।

५.३. देशमा स्थापित वा स्थापना हुने सरकारी एवं गैह्र सरकारी क्षेत्रका आयुर्वेद औषधी निर्माण कम्पनीहरूलाई असल औषधी निर्माण संहिताको आधारमा गुणस्तरयुक्त औषधी निर्माणमा प्रोत्साहित गरी आयातमा कमी गर्दै निर्यात प्रवर्द्धन गरिने छ । सो कार्यका लागि औषधी व्यवस्था विभाग एवं सम्बद्ध सरकारी निकायहरूसँग समन्वय कायम गरिनेछ ।

५.४. विदेशबाट आयात हुने वा स्वदेशमा निर्माण गरिने आयुर्वेदीय औषधीहरू गुणस्तर एवं अन्य प्राविधिक कार्यका लागि एक आयुर्वेदीय औषधी परीक्षण समिति र प्रयोगशालाको विकास गरिनेछ ।

५.५. नेपाल आयुर्वेद भेषज्यावली (Nepal Ayurveda Pharmacopoeia) को समसामयिक संकलन गरी प्रकाशन गरिनेछ ।

## ६. आयुर्वेद शिक्षा एवं जनशक्ति विकास

६.१ चिकित्सा जस्तो प्राविधिक क्षेत्रमा योग्य दक्ष र कर्तव्यनिष्ठ जनशक्तिको अहम् भूमिकालाई मनन् गरी आयुर्वेद क्षेत्रमा समर्पित भै कार्य गर्ने आयुर्वेद निष्ठ जनशक्तिको प्रभावकारी उत्पादन र यसका विविध पक्षहरू (शिक्षा, सेवा र औषधी निर्माण) को गुणस्तरमा अभिवृद्धि तथा उत्तरोत्तर विकास गर्दै लैजानको लागि

आवश्यक साधनयुक्त अनुसन्धानकेन्द्रसहित “राष्ट्रिय आयुर्वेद अध्ययन संस्थान” को स्थापना त्रि.वि.वि. अन्तर्गत गरिनेछ ।

६.२ भविष्यमा स्नातकोत्तर र विद्यावारिधि (पि.एच.डी.) स्तरीय आयुर्वेद शिक्षा प्रदान गर्ने उद्देश्यअनुरूप भौतिक पूर्वाधारहरूको विकास गर्ने गरी स्नातक स्तरीय आयुर्वेदीय जनशक्ति उत्पादन गर्ने कार्यक्रमलाई संचालन गरिनेछ ।

६.३ देशको प्राकृतिक स्रोतलाई अधिकाधिक परिचालन गरी जनतालाई प्रभावकारी अल्पव्ययसाध्य सुलभ र अपेक्षाकृत निरापद चिकित्सा सेवा प्रदान गर्ने परिप्रेक्ष्यमा आयुर्वेदको संरक्षण र यसको सर्वाङ्गिण विकास हेतु उच्चस्तरीय जनशक्ति नेपाल सरकारलाई आवश्यक हुनेहुँदा संख्यामा समिति नराखी उत्पादन प्रक्रियालाई निरन्तर संचालन गरिनेछ ।

६.४ मध्यम तथा आधारभूत स्तरीय आयुर्वेदीय जनशक्तिको उत्पादन गरिनेछ र सोको लागि शैक्षिक कार्यक्रम संचालन गरिनेछ ।

६.५ आयुर्वेद चिकित्सा शास्त्रको परिचयात्मक ज्ञान प्राप्त गर्ने जिज्ञासु, स्वदेशी र विदेशी नागरिकलाई पुनर्ताजगी (रिफ्रेसर) तालीम तथा अध्ययन भ्रमणको व्यवस्था मिलाइनेछ ।

**७. आयुर्वेद जनशक्ति व्यवस्थापन**

७.१ आयुर्वेद जनशक्ति व्यवस्थापन पक्षको सुदृढीकरणका लागि आयुर्वेद समूहअन्तर्गत विभिन्न सांगठनिक स्वरूपलाई उत्तरदायी एवं सेवामुखी बनाइनेछ ।

७.२ आयुर्वेद चिकित्सक तथा आयुर्वेद स्वास्थ्यकर्मीहरूलाई अन्य पद्धतिका चिकित्सक एवं स्वास्थ्यकर्मीहरूले पाएसरह वा पाउने भत्ता साथ विशेष सुविधाहरू उपलब्ध गराइनेछ ।

**८. आयुर्वेद अनुसन्धान**

८.१ आयुर्वेद औषधी, औषधी द्रव्य, प्रयोग तथा आयुर्वेद चिकित्सासँग सम्बन्धित विषयमा अन्तर्राष्ट्रिय स्तरको अनुसन्धानको लागि आवश्यक साधन सम्पन्न आयुर्वेद अनुसन्धान संस्थाको स्थापना गरिनेछ ।

८.२ देशमा उपलब्ध आयुर्वेदीय हस्तलिखित ग्रन्थहरूको संरक्षण, अभिलेख, बैंक, सन्दर्भ पुस्तकालयको स्थापना र समसामयिक सन्दर्भ ग्रन्थको प्रकाशन गरिनेछ ।

८.३ देशमा उपलब्ध जडिबुटीहरूको संरक्षण, खेती, प्रबर्द्धन, प्रयोग प्रविधि, वातावरणीय शिक्षा सम्बन्धी पत्रपत्रिका पुस्तक प्रकाशन तथा राष्ट्रिय अभिलेख तयार गरिनेछ ।

८.४ परम्परागत स्वास्थ्यकर्मीहरूको ज्ञानको संरक्षण एवं सान्दर्भिकतालाई अक्षुण राख्ने अभियान चलाइनेछ ।

८.५. उपयुक्त कार्यहरूका लागि आयुर्वेद अनुसन्धान संस्थान, राष्ट्रिय आयुर्वेद अध्ययन संस्थान, आयुर्वेद चिकित्सालयहरू, सरकारी तथा गैह्र सरकारी आयुर्वेद औषधी कम्पनीहरू एवं अन्य सम्बद्ध अनुसन्धान संस्थाहरूसँग समन्वय राखिनेछ ।

## ९. स्रोत परिचालन व्यवस्था

आयुर्वेदका विविध कार्यक्रमहरूको लागि आर्थिक टेवा पुऱ्याउन जडिबुटी एवं निर्मित औषधीहरूको निर्यात प्रबर्द्धन गरी आर्जित आर्थिक स्रोतको परिचालनका साथै उक्त कार्यक्रमहरूको कार्यान्वयनमा सहयोग पुऱ्याउन स्वदेशी तथा विदेशी दातृ संस्थाहरूको सहयोग उपलब्ध गराइनेछ ।

## १०. नेपाल आयुर्वेद चिकित्सा परिषद्

आयुर्वेद शिक्षा तथा सेवाको आवश्यक मापदण्ड निर्धारणका साथै चिकित्सकहरूको पञ्जीकरण, औषधालयहरूको प्राविधिक, प्रशासनिक, सुपरिवेक्षण, मूल्याङ्कनको सुव्यवस्थाका लागि राष्ट्रिय स्तरमा लागू हुने गरी नेपाल आयुर्वेद चिकित्सा परिषद्को गठनको व्यवस्था गरिनेछ ।

**जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्रको कार्य विवरण**

**उद्देश्य**

विशेषत: जिल्ला अन्तर्गत साधारण आयुर्वेद औषधालयहरूले गर्ने कामका अतिरिक्त अन्तर्गत औषधालयहरूको प्राविधिक, प्रशासनिक सुपरिवेक्षण, मुल्याङ्कन तथा औषधालयहरूका बीच समन्वय गर्नका साथै स्थानीय जडिबुटीय तथा अन्य स्रोतको परिचालनद्वारा अधिकाधिक औषधी निर्माण गरी नमूना संस्थाको रूपमा सेवा प्रदान गर्नु जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्रको मुख्य उद्देश्य रहनेछ ।

- स्वास्थ्य केन्द्रमा आएका तथा आयुर्वेद औषधालयबाट प्रेषण गरिएका विरामीहरूको चिकित्सा गर्ने ।
- पञ्चकर्मका केही सेवाहरू संचालन गर्ने ।
- नेपाल सरकारबाट प्राप्त औषधीहरूको सुव्यवस्थित ढंगबाट वितरण गर्ने गराउने ।
- स्थानीय जडिबुटिबाट अधिकाधिक औषधी तयार गरी वितरण गर्ने ।
- स्वास्थ्य केन्द्रको परिसरमा नमूना जडिबुटी उद्यान बनाउने तथा औषध जडिबुटीसँग सम्बद्ध वन, कृषि, सामुदायिक वन आदि सरकारी, गैर सरकारी निकायहरूसँग

अन्तरसंस्थागत समन्वय कायम गरी औषध जडिबुटीहरूको उत्पादन, संकलन, संरक्षण सम्बर्द्धन तथा त्यसको अधिकाधिक औषधीको रूपमा प्रयोग सम्बन्धमा कार्यकर्ताहरूलाई तालीम गोष्ठी आदि गरी ज्ञान दिलाउने ।

- स्थानीय जडिबुटीको लागत तथा हर्वेरियम तयार गर्ने ।
- जिल्ला अन्तर्गतका आयुर्वेद औषधालयहरूको प्राविधिक, प्रशासनिक सुपरिवेक्षण मूल्याकन गर्ने तथा अन्य कार्यक्रमहरूमा सहयोग पुऱ्याउने ।
- जडिबुटी तथा विरामीहरूको तथ्याङ्क केन्द्रमा उपलब्ध गराउने ।
- अन्य विभागीय निर्देशनअनुसार गर्ने गराउने ।

**आयुर्वेद औषधालयको कार्य विवरण**

**उद्देश्य**

विशेषतः स्थानीय जडिबुटी तथा अन्य स्रोतको परिचालन गरी स्वास्थ्य सेवालाई अधिकाधिक स्वावलम्वी बनाउन औषधालयमा नै औषधी निर्माण गरी सेवा पुऱ्याउनु औषधालयको मुख्य उद्देश्य हुनेछ ।

- औषधालयमा आएका विरामीहरूको साधारण चिकित्सा गर्ने तथा आवश्यक भएमा जिल्ला आयुर्वेद स्वास्थ्य केन्द्रमा प्रेषण गर्ने ।
- नेपाल सरकारबाट पठाएका औषधीहरू सुव्यवस्थित ढंगबाट वितरण गर्ने ।
- स्थानीय स्रोतमा उपलब्ध हुने जडिबुटीहरूको उत्पादन, संकलन, संरक्षण, सम्बर्द्धनका साथै त्यसको आयुर्वेद औषधीको रूपमा अत्यधिक प्रयोग गर्ने ।
- औषधालयको परिसरमा जडिबुटी उद्यान लगाउने तथा स्थानीय परम्परागत स्वास्थ्य कार्यकर्ता धामी झाँक्री, तथा सामाजिक कार्यकर्ताहरूलाई जडिबुटीको उत्पादन संकलन, संरक्षण, प्रवर्द्धनका साथै त्यसको आयुर्वेद चिकित्सामा अधिकाधिक प्रयोगबारे तालीमको आयोजनाका साथै स्थानीय स्तरमा सरकारी एवं गैह्रसरकारी निकायसँग समन्वय समितिहरूको गठन गर्ने ।
- स्थानीय जडिबुटीहरूको विवरण तथा नमूना तयार गर्ने र सम्बन्धित निकायमा पठाउने ।
- विशेषतः हेल्थपोष्ट नभएका क्षेत्रमा रहेका औषधालयहरूबाट हेल्थपोष्टबाट हुने अन्य सेवाहरूसमेत सञ्चालन गर्ने ।
- संक्रामक रोगको महामारी फैलिएका बखत रोकथामको व्यवस्था मिलाउने ।
- विरामीहरूको मासिक तथ्याङ्क सम्बन्धित निकायमा पठाउने ।
- अन्य विभागीय निर्देशनअनुसार गर्ने गराउने ।